# सत्य

## समाचार साप्ताहिक

तानसेन, पाल्पा मोल रू. १।-

२०४० बैशाख १ गते बिहीबार १४ अप्रैल १९८३ वर्ष- १ अङ्क- १


## हामीले आफ्नै बौद्धिक परम्पराको जग बसाल्नु परेको छ

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाह देवबाट नयाँ वर्षको उपलक्ष्यमा देशबासीका नाममा बक्सेको सन्देशमा हुकुम भएको छ. ···"नेपाली जनताले आफ्नो सरकार र पंचायतका विभिन्न निकायहरूको काम कार्वाई माथि बढदो रूपमा रूची राख्न थालेको कुरा निश्चय नै सबैका लागि सन्तोषको कुरो हो" मौसुफबाट हुकुम भएको छ "··देशमा विद्यमान अनेक समस्याहरूलाई राम्रो संग केलाई तिनीहरूलाई रचनात्मक ढंगले हल गर्नका लागि हामीले आफ्नै बौद्धिक परम्पराको जग बसाल्नु परेको छ . वर्षौं देखि देश भित्र अमन चैनको साथै देशवासीहरूको विशेष प्रयासको बावजूद पनि आर्थिक क्षेत्रमा वांछनीय सुधार हुन बाकी नै छ . द्रुततर आर्थिक विकासको निम्ति सरकारको नीति र प्राथमिकताहरूलाई नै नयाँ मोड दिनु पर्ने हो वा अरू बढी स्पष्ट पार्नु पर्ने हो अथवा योजना कार्यान्वयनलाई निर्धारित लक्ष्य हासिल गर्न बढी प्रभावकारी बनाउनु पर्ने हो यस बारे विशेष गरी बौद्धिक जगतबाट पनि राम्ररी ध्यान पुऱ्याउनु परेको छ ."



अन्त्यमा मौसूफबाट हुकुम भएको छ, "··· हामी प्रत्येक नेपालीले आफ्नो भाग्य आफ्नै इच्छा र आवश्यकता अनुसार आफैंले बनाउने प्रजातान्त्रिक पञ्चायत परिपाटी अपनाई सकेका छौं . यस तथ्यलाई राम्ररी बुझी हामी सबै नेपालीहरूले आफ्नो गहन जिम्मेवारीलाई पूरा गर्न सकौं र बदलिंदो विश्वमा नेपाल र नेपालीलाई संग संगै अक्षुण्ण बनाइ राख्न सकौं . यही हाम्रो शुभ-कामना छ ..."

# निकारागुआमा अमेरिकी हास्तक्षेप

हालै अमेरिकाको न्यूजवीक साप्ताहिकले मध्य अमेरिकी देश निकारागुआमा अमेरिकी हस्तक्षेप बारे केही नयां तथ्य पत्ता लगाएको छ . विभिन्न मुलुकको संस्थापित सरकारको सत्ता पल्टाउने काममा अमेरिकी गुप्तचर संस्था सी.आई.ए. साह्रै बदनाम भै सकेको छ . हाल छिमेकी देश होण्डुरस मार्फत सी. आइ. ए. ले निकारागुआमा हस्तक्षेप गर्दैछ. निकारागुआबाट भागेर होण्डुरसमा शरण लिई बसेकाहरूलाई विद्रोह गर्न सिकाउन र लडाइका तालिम दिन त्यहां अमेरिकाले १ करोड ९० लाख डलर प्रत्यक्ष खर्च गर्ने भएको छ भने एउटा गोप्य कोषबाट थप एक करोड १० लाख डलर खर्च गर्ने भएको कुरा न्यूजवीकले पत्ता लगाएको छ .

अमेरिकाको भनाइ अनुसार अल साल्भाडोरका विद्रोहीहरूलाई निकारागुआको सान्दानिस्ता सरकारले क्यूबा मार्फत आएको रूसी हतियार पुर्याएको हुनाले त्यसो गर्न नदिन दबाब दिनको लागि निकारागुआमा विद्रोहीहरूलाई उक्साएको हो .

हाल अल साल्भाडोरमा दक्षिणपंथी दमनकारी सरकार र बामपंथी विद्रोही बीच कडा संघर्ष चलिरहेको छ र सरकार कमजोर अवस्थामा छ . त्यहांका सरकारको कमजोरी र आन्तरिक कलह नै वास्तवमा अमेरिकाको चिन्ताको कारण हो . अहिले सरकार र बामपंथीहरू बीच वार्ता चलाउने व्यापक दायरा भएको सरकार गठन गर्ने प्रयत्न भैरहेछ तर अमेरिकालाई डर छ कि यसरी बनेको सरकार, निकारागुआमा जस्तै, पछि बामपंथीहरूकै कब्जामा जानेछ . यसैले अमेरिकाले अर्को चाल चलेर निकारागुआमा विद्रोहीहरूलाई घुसाएर अलसल्भाडोरको विद्रोहीहरूलाई कायल पार्न चाहन्छ . यसैको कारण निकारागुआमा अमेरिकी हस्तक्षेप बढि हेको छ .

निकारागुआका एकजना विद्रोही नेता, जसको सुहाउँदो नाम 'आत्म हत्या' छ, ले न्यूयोर्क टाइम्सलाई भने अनुसार, "सान्दिनिस्ताहरूको टाउको नकाटे सम्म साल्भाडोरमा हतियार पुर्याउने काम रोकिन्न" र अमेरिका पनि यही चाहन्छ .

अमेरिकाले यी सबै काम गोप्य रूपमा गर्नु परेको एउटा कारण के हो भने अमेरिकी कांग्रेसले सान्दिनिस्ता सरकारलाई पल्टाउने काममा राज्यको कोष लगाउन रोकलगाइ दिएको छ .

(टाइम्स अफ इण्डियामा प्रकाशित ए. एस. अब्राहमको लेखको आधारमा)

## निकारागुआ

राजधानी मानागुआ, क्षेत्रफल १३०,००० वर्ग कि. मी. जनसंख्या २७ लाख भाषा स्पेनिस र अंग्रेजी. धर्म इसाई

मध्य अमेरिकाको मुलुक अवस्थित उत्तरमा होण्डुरास दक्षिण कोस्टारिका पूर्व क्यारेबियन सागर पश्चिम प्रशान्त महासागर . १८३८ मा स्वतन्त्र राज्य बनेको . राष्ट्रिय अर्थतन्त्रको आधार कृषि . मुख्य कृषि उत्पादन - कपास, कफी र उखु . मुख्य उद्योग- सलाइ खाना, बीयर र प्लास्टिक सामान . खनिज-सुन, तामो, चाँदी सिसा र जस्ता .

## चिन अमेरिका संबन्धमा फाटो

हालै चिनका चर्चित टेनिस खेलाडी हु नालाई अमेरिकाले राजनैतिक शरण दिएको कुराको विरोधमा चिनले अमेरिकासंग भएको सांस्कृतिक सम्झौता रद्द गरेको छ . अब उप्रान्त ती दुई देशका कलाकार हरू, सांस्कृतिक टोलीहरू फिल्महरू तथा खेलाडीहरूको आवागमन र आदान प्रदान हुने छैन र भ्वाइस अफ अमेरिकाका कर्मचारी पत्रकार चिनमा र रेडियो बिजिङका कर्मचारी पत्रकार अमेरिकामा आउने जाने काम पनि बन्द हुने छ .

चिनले यति सानो कुरामा यत्रो ठूलो खैलाबैला मच्चाउला भनेर अमेरिकाले ठानेको थिएन. तर चिनले यत्रो कडा प्रतिक्रिया जनाउनुमा ताइवानको कारण नै प्रमुख देखिन्छ किनभने अमेरिकामा रोनाल्ड रेगन राष्ट्रपति भए पछि ताइवानलाई चिनको मूख्य भूमिमा मिलाउने काममा बाधा परेको छ . हालै अमेरिकाले हात हतियारको ठूलो खेप ताइवानलाई पठाएको छ. हाल दक्षिण पूर्वी एशियामा भएका गतिविधिको कारणले गर्दा अमेरिकाले ताइवान जस्तो महत्वपूर्ण क्षेत्रलाई त्यसै छाड्ने पनि छैन .


# सत्य

समाचार साप्ताहिक

वर्ष– १ अङ्क– १

१ वैशाख २०४०

१४ अप्रैल १९८३

प्रकाशक र सम्पादक

विनय कुमार कसजू

कार्यालय

८/७५ श्रीनगर

तानसेन, पाल्पा

लुम्बिनी अंचल, नेपाल

☎ १८७

मुद्रक

कुमार प्रेस

तानसेन, पाल्पा


## सांचो कुरा

नेपाली पत्रकारिता जगतमा आएको बाढीमा 'सत्य' पनि थपियो . बाढीमा अलिकति पानी थपिएर केही हुने हैन तर खडेरीमा बादल मात्रै लागे पनि ठूलो आशा हुने रहेछ . २२ वर्ष पछि अब पाल्पाको पत्रकारिता जगतमा परेको खडेरीमा आशाको बादल छाउँछ कि ? नयां वर्षको रूपमा सत्यले पाठक वर्गलाई यही आशाको सन्देश दिने जमर्को गर्छ .

विश्वमा सञ्चारका नयां-नयां माध्यमहरू थपिंदै छन् जसको प्रभाव स्वरूप नेपालले पनि केही वर्ष यता सञ्चारका आधुनिकतम साधनको उपयोग गर्न थालेको छ . मुद्रण प्रविधिले ठूलो फड्को मारि सकेको छ तर हामीकहां अझै स्वस्थ पत्रकारिताको विकास हुन सकेको छैन. राष्ट्र निर्माणलाई मूल लक्ष्य बनाएर पत्रकारितारूपी तपस्या गर्ने तपस्वी पत्रकारहरू कति जना छन् हामीकहां ? कसैको घरको छानामा चढेर कसैको घरमा ढुँगा हान्ने, कसैको बुई चढेर कसैको खेदो गर्ने अस्वस्थ पत्रकारिता अविकसित देशहरूमा खुबै फस्टाउने गरेको देखिन्छ . हामीकहां पनि त्यसको अभाव छैन .

आजको विश्व महायुद्धको संघारमा पुगेको छ . ठूला राष्ट्रहरू बीच हतियारको होडबाजी बढ्दै छ . सम्भावित विश्वयुद्धको मारबाट बचन असंलग्नता बाहेक अरू के उपाय छ ? के हामी सही अर्थमा असंलग्न हुन सकेका छौं ? असंलग्न राष्ट्रहरूको नवौं शिखर सम्मेलनमा हाम्रो भूमिका कुन हद सम्म असंलग्न थियो ? हाम्रा तन्नेरीहरूको रगत विदेशमा साम्राज्यवादी मुलुकहरुको स्वार्थ सिद्धिको लागि बेचिएकै छ, तर भविष्यमा ती मुलुकहरुको पक्षधर भएर हाम्रा गाउँघर र छाप्रा र गोठहरु तापाणविक हतियारका प्रयोग स्थल र युद्धक विमानका लक्ष्य नबनुन् . नयां वर्ष शान्ति र प्रगतिको वर्ष बनोस् .

विनय कुमार कसजू

## ने. रा. शिक्षक संगठन जिल्ला समिति पाल्पा द्वारा अपील प्रकाशित

पाल्पा तानसेन चैत्र २९ गते, आजको दिनमा ने.रा.शिक्षक संगठनले वैधानिक मान्यता पाएको हुंदा केन्द्रिय समितिको निर्णय अनुसार आजको दिनलाई शिक्षक दिवसको रूपमा मनाउन जिल्ला समिति पाल्पाले पाल्पाका सम्पूर्ण शिक्षकहरु समक्ष अपील गरेको छ . आज प्रकाशित उक्त अपीलमा शिक्षामा जन सहभागिता जुटाउने नाममा श्री ५ को सरकारले शिक्षाको पूर्ण भार अभिभावक र शिक्षकमा सुम्पेको र श्री ५ को सरकार उत्तरदायित्वबाट पंछिदै गएको आरोप लगाइएको छ . जिल्लाको सन्दर्भमा शिक्षकहरूलाई हतोत्साहित गर्ने विभिन्न नकारात्मक पाइला चालिएको, शिक्षकहरूलाई पूर्वाग्रह राखी धम्क्याउने तर्साउने जस्ता मानसिक यन्त्रणा दिइएको, स्थायी गर्ने क्रममा समेत असमझदारीपूर्ण व्यवहार गरिएको, बिना कारण कसैलाई अवकास दिइएको र सारांशमा शिक्षक जगतको वातावरण असन्तुलित र परस्पर समझदारीको संकटबाट गुज्री रहेको कुरा उक्त अपीलमा भनिएको छ अपीलको अन्त्यमा संपूर्ण शिक्षकहरूलाई आफ्नो हक र हितको लागि, अनावश्यक दबाबबाट मुक्त भै सम्मान साथ काम गर्न ने रा. शि. संगठनको संगठनात्मक पक्षलाई बरोपार्न र संगठनलाई सुदृढ पार्न आह्वान गरिएको छ .

## रू० ५०० को नक्कली नोट

हाल तानसेन बसन्तपुर टोलको एउटा पसलमा एकजना मानिसले रू ५००।- को नक्कली नोट चलाउने प्रयत्न गरेको थाहा लागेको छ एकजना अज्ञात व्यक्तिले एउटा पसलमा माल किनेर रू ५०० को नोट दिएको र पसलमा ५००।- को खुद्रा नभएको हुंदा अर्को पसलमा नोट साटन गएको र साटन गएको दुकानदारले नोटमा शंका गरेको देखेर उक्त व्यक्ति भागिसकेको थियो . प्रत्यक्षदर्शीको भनाइ अनुसार उक्त नक्कली नोट केही बाक्लो छुंदा खस्रो र रङ्ग अलि नमिलेको छ . बसन्तपुरमा धेरै मानिसले त्यो नोट देखेका थिए .

## सामुदायिक सेवामा प्रहरी कार्यक्रमको उद्घाटन

तानसेन, चैत्र २८ गते, पाल्पामा "सामुदायिक सेवामा प्रहरी" कार्यक्रमको लुम्बिनी अंचलाधीश श्री काजीमान कन्दङवाले स्थानीय बाल मन्दिरमा एक समारोह बीच समुद्घाटन गर्नु भयो . उक्त कार्यक्रम तानसेनमा यही वैशाख १ गते देखि लागु हुदैछ .

कार्यवाहक प्रधान पंच श्री प्रेमराज शाक्यको अध्यक्षतामा भएको सो समारोहमा 'सामुदायिक सेवामा प्रहरी' कार्यक्रम बारे ए. पी. श्री धेनु शमसेर राणाले विस्तृत जानकारी दिनु भएको थियो . स्वागत भाषण र धन्यवाद ज्ञापन पाल्पाका प्रहरी निरीक्षक श्री जोग राज श्रेष्ठले गर्नु भएको थियो . अन्य वक्ताहरूमा प्र जि. अ. श्री बाबुराम पौडेल, क्याम्पस प्रमुख श्री विष्णु प्रसाद शर्मा, पाल्पा उद्योग वाणिज्य संघका सभापति श्री नगेन्द्र शेखर बज्राचार्य, प्रधानाध्यापक श्री खेलाराज पाण्डे, नेपाल महिला सं. जि. का. स.का अध्यक्ष श्रीमती अम्बिका भट्टराई र मीन बहादुर कुंवर हुनु हुन्थ्यो.



# स्व. श्री माधव प्रसाद देवकोटाको मूल्यांकन हुन बाकी नै छ



गएको चैत १९ गते स्व श्री माधव प्रसाद देवकोटाको शोक सभामा केही विद्वान वक्ताहरूबाट श्री देवकोटाको व्यक्तित्व र कृतित्व बारे चर्चा भयो . साहित्यसेवा समिति, कोपिला साहित्यक परिवार, पासा खल र धवल पुस्तकालयको संयुक्त आयोजनामा श्री जगत बहादुर जोशीको अध्यक्षतामा भएको उक्त शोक सभामा राज सभा सदस्य श्री कमल राज रेग्मीले वहाँको गुरुमय व्यक्तित्व बारे बोल्नु भयो भने उप प्राध्यापक श्री हीरामणि शर्माले वहाँको कृतिको चर्चा र मूल्याङ्कन गर्ने प्रयत्न गर्नु भयो . प्र० जि० अ० श्री बाबुराम पौडेलले श्री देवकोटा स्वतःस्फूर्त (जन्मजात) प्रतिभा र मेहनत द्वारा आर्जन गरेको प्रतिभाको बीचको प्रतिभा अर्थात् केही अंशमा जन्मजात र केही अंशमा मेहनत द्वारा अर्जित प्रतिभा हुनु हुन्थ्यो भन्नु भयो .

व्यक्तिको मूल्याङ्कन व्यक्तित्व र कृतित्व दुवैको आधारमा हुनु पर्छ . राष्ट्रले श्री माधव प्रसाद देवकोटालाई कविको रूपमा चिनेर विभिन्न मान सम्मान पनि दिएको छ भने पाल्पालीले वहाँलाई गुरु, पुराणवाचक पण्डित र कवि तीन रूपमा चिन्छन् . वहाँ भारतमा संस्कृतका कविको रूपमा चिनिनु हुन्थ्यो . वहाँको मूल्याङ्कन भविष्यले कसरी गर्ला त ? प्रकाशित ग्रन्थको संख्याको आधारमा वहाँको मूल्याङ्कन हुने हो कि ? अथवा पुराणवाचक पंडित वा हजारौं विद्यार्थीलाई पढाउने गुरुको रूपमा हुने हो ? वहाँका कृतिहरूले आम जनता र देशको लागि के दियो भन्ने कुरामा समुचित रूपमा वहाँको मूल्याङ्कन हुन बाँकी नै छ . यदि उपलब्धीको आधारमा मूल्याङ्कन नभ व्यक्तित्व र कृतिको संख्याको आधारमा मात्र मूल्याङ्कन हुने हो . ठूलो न्याय हुनेछ . भने त्यसको के महत्व होला ? लेखक आफ्नो रचना प्रति इमान्दार भएन भने लेखकको समाजमा कुन स्थान हुन्छ ! श्री देवकोटाका व्यक्तित्व र कृतित्वका विभिन्न पक्षहरू छन् र सबै पक्षको समग्र विश्लेशण गरेर वहाँको मूल्याङ्कन गर्न हाम्रा समीक्षक र समालोचकहरू अघि सरुन् र निर्भिक भै वहाँको परिचय आम पाठक समक्ष प्रस्तुत गरुन् . आम पाठक र साहित्यकार प्रति यही नै

## सुकुम्बासीलाई राजनीतिको गोटी बनाउनेहरू माथि कार्वाई हुनु पर्छ

हाल नवलपरासी जिल्लामा अवैध तरीकाले बसोबास गर्ने करीब १४ हजार मानिसलाई श्री ५ को सरकारले बन क्षेत्र सुदृढीकरणको नाममा हटाउने घर भत्काइदिने र पाक्न लागेको बाली स्याहर्न नदिने जस्ता अमानवीय काम गरेको छ. नेपालको बन जङ्गलको विनाश रोक्नु र संरक्षण गर्नु यस्तो महत्व-पूर्ण काम हो जसलाई अरु सबै काम छाडेर भए पनि सम्पन्न गर्नु पर्दछ. तर निमुखा सुकुमबासीहरूको घर भत्काएर उनीहरूको बिजोग गरेर हैन.

जनमत संग्रहको दौरानमा अनेक अवैध राष्ट्रघाती कामहरू भए जस-मध्ये वन सम्पद को ब्रह्मलूट पनि हो. पहेंलोमा छाप लगाउन भनी सोझा सिधा जनतालाई जङ्गल फाँडने र बस्तीबसाल्ने लोभ देखाइयो. नवलपरासीका रा० पं० स० श्री मदन बहादुर प्रधान को भनाइ अनुसार "त्यहाँका जनता निर्दोष छन्. त्यो ठाउँमा सुकुमबासीहरूलाई हटाउनु भन्दा अगाडि जङ्गलमा बसोबासको लागि आदेश दिने (तत्कालीन) अञ्चलाधीश लीलाराज बिष्ट आयोग-का अध्यक्ष हर्क बहादुर बूढा तथा सदस्यसचिव पूर्णमान शाक्य माथि कार्वाही गरिनु पर्छ." राष्ट्रियसंपत्ति बन र सुकुमबासीलाई आफ्नो राज-नीतिको गोटी बनाउन पल्केका व्यक्तिहरू राता रात मालामाल हुने र ठूलो पदमा पुग्ने तर बिचरा सुकुम-बासीहरूको बिजोग हुने यस्तो घटना नवल परासी र केही तराईका जिल्ला-हरूको लागि नौलो हैन. केही वर्ष बिराएर यस्तो घटना घटिरहेका छन्. समस्याको मूल पहिल्याएर त्यसको समाधान नगर्दा सम्म पहाड-को घरबारी बेचेर मधेश पस्नेहरू र वास्तविक सुकुम्बासीहरूको यो बिजोग दोहोरिंदै आनेछ. यसमा शंका छैन.





पूर्वजहरूलाई श्रद्धांजली र अनुजहरूलाई शुभ-कामना

## २२ वर्ष पछि पाल्पाबाट

### पहिलो साप्ताहिक पत्रिकाको प्रकाशन

पाल्पा जिल्लाको पत्रकारिताको जगतमा २२ वर्षको खडेरी पछि पहिलो पटक यो 'सत्य' समाचार साप्ताहिकको आज देखि प्रकाशनको शुभारम्भ भएको छ. साप्ताहिक पत्रिका (समाचार पत्र) को क्षेत्रमा यहाँ पहिलो पटक २०१४ सालमा श्री अम्बर ध्वज खातीको सम्पादनमा "नयाँ किरण" साप्ताहिक निस्केको थियो. १० पैसा मोल राखिएको उक्त साप्ताहिक पत्र २०१४ असार २४ गते देखि भदौ ६ गते सम्म ६ अंक निस्केको थियो. त्यसको दर्ता भएको थिएन. पछि "नयाँ किरण" मासिक रूपमा २०१४ चैत्र सम्म ३ अंक प्रकाशित भयो.

पछि २०१८ साल पुस १ गते देखि श्री चेत बहादुर कुंवरको सम्पा-दनमा 'पाल्पा' नामक साप्ताहिक पत्र दर्ता भै निस्कन थाल्यो. प्रति अंक २० पैसा र वार्षिक १० रू. मोल राखिए-को उक्त पत्रिका चैत्र १४ गते सम्म ११ अंक निस्के पछि बन्द भयो.

त्यस पछि धेरै वर्षसम्म कसैले पनि यहाँ साप्ताहिक पत्र निकाल्ने जमर्को गरेनन. पत्रकारिताको इति-हास पल्टाउने हो भने पाल्पमा पत्र-कारिताको प्रारंभ भएको २००७ साल भन्दा पहिले हो. चेतनाको दृष्टिले अघि रहेको यस पाल्पा जिल्लामा पहिले उपलब्ध ठोस प्रमाण अनुसार सर्वप्रथम २००६ सालमा श्री कमल राज रेग्मी, श्री जगत बहादुर जोशी र श्री सूर्यलाल श्रेष्ठको सम्पादनमा " पथ प्रदर्शक " नामक हस्त लिखित मासिक पत्रिका प्रकाशित भएको थियो. २००८ मा 'सघर्ष' नामक हस्तलिखित पत्रिका (पाल्पा जिल्ला टुक्रिएको विरोधमा) केही अंक निस्क्यो. २००९ सालमा धवल पुस्तकालयबाट श्री कुलमणि देवकोटाको सम्पादनमा प्रगतिशील साहित्यलाई अँगालेर 'प्रगति' नामक हस्तलिखित मासिक पत्रिका करीब २ वर्ष सम्म प्रकाशित भयो. २०१० सालमा श्री कुलमणि देवकोटा प्रधान सम्पादक र स्व. श्री प्रयाग कुमार कसजू, श्री मोहनमान सैंजू, श्री भग-वतीध्वज राजवंशी, श्री द्वारिकामान सैंजू व्यवस्थापक मण्डल भएको 'बाल सखा' नामक हस्तलिखित मासिक पत्रिका निस्क्यो र २०१२ सालमा बन्द भयो. २०११ सालमा "बाल सखाको" प्रधान सम्पादक श्री शिवराम प्रधानाङ्ग र उप सम्पादकमा श्री भगवतीध्वज राजवंशी हुनु हुन्थ्यो.

विद्यालयहरूबाट मुख पत्र निका-ल्ने कामको थालनी २०१२ सालमा श्री जगत बहादुर जोशीको संपादनमा जनता विद्यालय तानसेनबाट निस्कने "उपहार" नामक मुखपत्रले गऱ्यो. २०१३साल देखि ज्ञानमाला सभाबाट श्री चिनियालाल बज्राचार्य र श्री बुद्ध रत्न शाक्यको संपा-दनमा "वैशाख पूर्णिमा" वार्षिक निस्कन थाल्यो. यस पछि अनेक पत्रिका र संकलनहरू देखिन थाले जस्तै- नयां किरण (२०१४), युवक बुलेटिन(२०१३), कोपिला(२०१४) सिर्जना (२०१५), पद्मोदय पाल्पा पब्लिक हाइ स्कूलको मुखपत्र(०१६) पाल्पा (साप्ताहिक २०१८), भारती (मोहन कन्या मा. वि. को मुखपत्र २०१८) आलोक (त्रिभुवन डिग्री कलेजको मुखपत्र २०१८), धवलगिरी (धवल पुस्तकालयबाट प्रकाशित सामयिक संकलन, २०१८), प्राथमिक स्कूल शिक्षक शिक्षण केन्द्र बुलेटिन, मासिक (२०२१-२२), प्रा. वि. भगवती स्थानको मुखपत्र (२०२३-२४), श्रीनगर सामयिक संकलन (२०२६), आवाज सामयिक संकलन (२०३०), मायालु सा. सं. (२०३०) स्काउट बुलेटिन (२०३१) राम तुलसी व्या मा वि रामपुरको मुखपत्र 'उषा' भवानी मा वि कुसुम खोलाको मुखपत्र 'कुसुम', रा. स्व. वि. म. को मुखपत्र "राज मुकुट" दमकडा नि. मा. वि. को मुखपत्र 'माण्डव्य', 'क्षितिज' गोजिका, 'बाल विकास' (अन्तर्राष्ट्रिय बाल वर्षको उपलक्ष्यमा) त्रिभुवन बहुमुखी क्याम्पस को 'जनल' "हाम्रो ज्योति" (२०३८), क्यव नेवारी भाषामा २०३८). आदि.

सामाजिक संकलनमा रोक लागे पछि दर्ता गरी प्रकाशन गर्ने क्रममा निम्न लिखित पत्रिका दर्ता भयो. श्रीनगर विविध त्रैमासिक (२०३१) पाहुर, रमाइलो मासिक (२०३५) तानसेन डाइजेष्ट त्रैमासिक (२०३५) पाल्पाली त्रैमासिक (२०-३५), जमर्को त्रैमासिक (२०३६)

दर्ता नगरी अनियतकालिन र सामयिक संकलनको रूपमा पह्लार देखि प. प. न. क्या. मा. वि का छात्रहरूको 'भिमिरे' पाल्पा जेसीजको जेसीज न्यूज बुलेटिन (त्रैमासिक) तिनाउ जलाधार योजनाको तिनाउ संरक्षण पत्रिका' निस्कि रहेका छन्. पाल्पाली त्रैमासिक पोहोर देखि पाक्षिक समाचार पत्रको रूपमा निस्कन थालेको छ .

गत वर्ष श्री ५ को सरकारले उदारतापूर्वक पत्र पत्रिका प्रकाशित गर्ने नीति लिए पछि पाल्पामा श्री कर्ण बहादुर कार्कीको सम्पादन र प्रकाशनमा निस्कने 'आवाज' स्वीकृति पाए पछि पनि यहां धेरै समय सम्म कुनै पत्र पत्रिकाले स्वीकृति पाएनन्, हाल यहाँ अरू ४-५ वटा साप्ताहिक पाक्षिक र मासिक पत्रिकाहरू स्वीकृति ( दर्ता ) पाउने प्रतीक्षामा छन् . अब आशा छ ती पत्रिकाहरूले पनि चाडै स्वीकृति पाउने छन् र पत्रकारिता र जनचेतनाको विकासमा नयाँ पाइला चाल्ने छन् .

—:०:—

## श्री इन्द्रलाल भारतीको अभिनन्दन

काठमाडौं स्थित पाल्पालीहरूको संस्था पाल्पाली संगमले पाल्पाली प्रतिभाहरूको सम्मान गर्ने सिलसिलामा यस पटक पाल्पा जिल्लामा १९९२ साल देखि २०३७ सम्म अनवरत शिक्षण पेशामा लागी सेवा गर्नु भएका श्री इन्द्रलाल भारतीलाई वहांको सेवाको कदर गर्दै वहांको अभिनन्दन गर्ने निर्णय गरेको छ . यस अघि पनि उक्त संगमले स्व. श्री माधव प्रसाद देवकोटा र श्री अयोध्या प्रसाद प्रधानको अभिनन्दन गरेको थियो .

—:०:—

## १५ रू. ढाकर गोरूको मासु

तानसेनमा मासु खानु एउटा समस्या नै बन्दै गएको छ। यहां बाख्रीको मासुलाई खसीको मासु भनेर बेच्नु सामान्य कुरा भैसकेको छ त्यस्तै रोगाएर र भीरबाट लडेर मरेका खसी, बाख्रो, र भैंसीको मासु पनि नबिकेको हैन. थारी भैंसी र बाख्रीहरू दिउँसै बजार बजार लग्ने काम यहांका मासु व्यापारीहरूले गरेका छन् .

अब आएर यो हिन्दू देशमा मासु व्यापारीहरूले गाई गोरूको मासु पनि रांगाको मासु भनी बेच्न थालेको कुरा सुनिन थालेको छ . धर्म प्राण व्यक्तिहरूको लागि यो सोझै नर्क जाने साह्रै ठूलो अपराध हो. तानसेन नजिकका र विशेष गरी बगनास तिरका सार्कीहरूले भीरबाट लडेका र बूढा भएका गोरुको मासु ढाकरमा राखेर सांझ पख बजारमा ल्याउने कुरा प्रत्यक्षदर्शीले बताएमा छन् . त्यसरी ल्याइएको मासु एक ढाकरको रू. १५।- मा मासु व्यापारीहरूले लिने गर्छन् भन्ने सुनिन्छ र ताजा भए खाले बिक्री हुने र बासी भए सुकुटी बनाएर बेचिन्छ भन्ने भनाई छ . स्मरण रहोस् यहां नगर पञ्चायतले बधस्थल (मासु काटने ठाँउ) बनाइ दिएको छ तर कसैले पनि त्यसको उपयोग गर्दैनन् .



## शिक्षक दिवस सम्पन्न

तानसेन चैत्र २९ गते . नेपाल राष्ट्रिय शिक्षक संगठनले आजको दिनमा मान्यता पाएको हुंदा आजको दिनलाई शिक्षक दिवसको रूपमा अधिराज्य भरि मनाउने निर्णय अनुसार ने. रा. शि. सं. जिल्ला समिति पाल्पाले प्राथमिक विद्यालय भगवती स्थानमा शिक्षक दिवस कार्यक्रम समारोह पूर्वक मनायो .

समारोहको अध्यक्षता का. वा. अध्यक्ष श्री मेघराज शर्माले गर्नु भएको थियो . कार्यक्रमको शुरूमा शहीद शिक्षकहरूको सम्झनामा १ मिनेट मौन धारण गरिएको थियो . उपस्थित शिक्षकहरूको स्वागत गर्दै कार्य समितिका सदस्य श्रीमती गगा देवी करुजूले 'शिक्षक दिवस' सम्पूर्ण शिक्षकहरूले राष्ट्रिय दिवसको रूपमा मनाउनु पर्छ भन्नु भयो त्यस पछि का. स. स. श्री दयाराज वस्याल (प्र. अ.) ले जिल्ला समिति पाल्पा द्वारा आज प्रकाशित अपील पढेर सुनाउनु भयो. शिक्षक श्री भूपेन्द्र जी सी. ले कविता पाठ गर्नु भए पछि का. स. स. श्री हीरा नेपालले बडो जोशिलो भाषण गर्दै जिल्लाको शिक्षक जगतमा ल्याइएको त्रस्त वातावरणलाई हटाउन सम्पूर्ण शिक्षकलाई शिक्षक संगठनको झंडा मुनि एकत्रित हुन अनुरोध गर्नु भयो अर्का वक्ता का० स० स० श्री कुल प्रसाद नेपालले बडो ओजपूर्ण भाषामा संगठनको संघर्षमय इतिहासको स्मरण गर्दै भन्नुभयो, सुगम परिस्थितिमा मात्र हैन विकट परिस्थितिमा पनि सम्पूर्ण शिक्षक सक्रिय हुनु पर्छ .

(बाकी पृष्ठ १८ मा)







# खड्ग समसेरको षड्यंत्र ?

यसै मौकामा श्री प. चि. खड्ग समसेरले वगावत गर्न लाग्यो, भन्ने जाहेरी मे. तेज बहादुर मल्लको आयाकोले··· इनै तेज बहादुरले तेस्तो जाहेरी गरेछन्। ३ चादको श्रीपेज पनि बनाइ बक्स्यो, पल्टनलाइ धावाको कांमा तालीम हुन लागेको छ, घोड़ा ६, हात्ति ६, खरीद पनि भयो। आठ पहरियालाइ घोड़ा चढन सिकाइन लागेको छ, भन्ने यस्तै अनेक कुरा जाहेर गरेका रहेछन्।

··· ··· ···

म पाल्पा छदा ( म वाहासित छदा ) ठाडा पाल्पामा सधैं नेपोलियनले हमला गरेको नेपोलियन सित सिपाहि के गरी मिले, सो कुरा नजर भै बराबर मलाइ सुनाइ बक्सीन्थ्यो··· केही गहारो छैन नेपाल फत्ये गर्न, तर एकदं छोपन पर्दछ, मजि हुन्थ्यो।··· कोडको अक्षर पनि बनायर बक्सेको थियो।

··· वहांको हात पयर चलन न सकने राजनीतिको प्रयोग भै सकेको रहेछ। ··· ···सारा संपत्तिहरू लि मुगलान जानु पनि भै सकेछ।

(पछि लखनौमा भेटदा) ··पछिबाट आफुलाइ लागेको बातको सफाइको कुरा किकि बक्सीयो। मैले केही बिरायाको छैन, श्री ३ बाट मलाइ म पाल्पा पूर्वको राजा, हजुरपाल्पा पश्चिमको राजा, भन्ने बडापत्र बक्स्यो। मलाइ यत्रो निगाहा बक्स्यो। अब रवाफैसित बसौं, भन्ने लाग्यो र घोडा हात्ति खरीद गरेको हुं। श्री पेच बनायो भन्ने भयेकोलाइ श्रीपेच यहि हो भनि देखाइ बक्सियो . माझमा श्री गणेश मूर्ति रहेछ दाहिना बाआ बुट्टा रहेछ . ३ चाद ता रहेछ तर सानु रहेछ . पल्टन तालीम गऱ्यो, धावाको काम सिकायो भनेकोलाइ तिनै तेजबहादुर मल्लको जिम्मा पल्टन दियेको थिये। उनैको तजबीजले कवायद गराउदथे। यसो गरौं कि भन्दथे, हुन्छ, भन्दथें, भन्ने यस्तै नेपाल श्री ३ लाइ सुनाउने कुरा गरी बक्सियो।

श्री काशीनाथ आ.दी.द्वारा रचित पुस्तक 'भएका कुरा' बाट उध्दृत-खडगसमशेर घपिदा लेखक उनीसंगै थिए र धेरै काल सम्म उनको निकट सम्पर्कमा रहेको र पाल्पामा बसेका थिए । उनको डायरी जस्तो लेखनलाई उनकै भाषामा 'भएका कुरा' शीर्षक राखी २०३१ मा प्रकाशित गरिएको थियो – संपादक)



विज्ञान

## उद्धारक भू-उपग्रह

पृथ्वीको विभिन्न भागमा, अनकन्टार ठाउँमा पनि, हवाइजहाज, पानीजहाजहरूको आवागमन भै रहदा दुर्घटनाहरू हुन्छन् र कहिले काहिं दुर्घटनामा परेकाहरूले यथा समयमा सूचना पठाउन सक्तैनन्. कहिले काहिं सूचना साधन नै बिग्रन्छ . यसरी दुर्घटना वा आपत विपतमा परेका पानी र हवाइ जहाजहरूको सूचना प्राप्त गरी उद्धार कार्य तिव्र पार्न रूस र अमेरिकाले उद्धारक भू-उपग्रहको व्यवस्था गरेका छन् .

केही समय अघि रूसको 'कस्मोस १३८३' नामक भू-उपग्रहले क्यानाडा र अमेरिकामा दुईवटा हराएका हवाइ जहाज कहां छ भनी पत्ता लगाउने सूचना दियो र यसरी उद्धार कार्यमा सहायता गऱ्यो .

उक्त भू-उपग्रह "अन्तर्राष्ट्रिय खोजी र उद्धार अन्तरिक्ष व्यवस्था" (COSPAS-SARSAT) को एउटा अंग हो . यसलाई ३० जुन १९८२ मा अन्तरिक्षमा प्रक्षेपण गरिएको थियो .

यस उद्धार व्यवस्थालाई रूस, अमेरिका, क्यानाडा र फ्रांस द्वारा संयुक्त रूपमा विकसित गरिंदै छ . रूसले COSPAS (आपतमा परेका पानी र हवाई जहाजको खोजी गर्ने अन्तरिक्ष व्यवस्था)को विकास गरेको छ भने अरू तीन देशले SARSAT ( भू-उपग्रह द्वारा पत्ता लगाई खोज्ने र उद्धार गर्ने व्यवस्था ) को विकास गर्दैछन् . अमेरिकाको SARSAT भू-उपग्रह फरवरी १९८३ मा प्रक्षेपण गरिनेछ .

यो संयुक्त व्यवस्था अन्तर्गत कैयौं भू-उपग्रहहरू प्रक्षेपण गरिनेछन् जसले पृथ्वीको ध्रुवीय परिभ्रमण (ध्रुवहरू माथि भएर परिक्रमा) गर्नेछन् र पृथ्वी भन्दा ८०० देखि १००० कि. मि. माथि हुनेछन् . धेरै अग्लोमा

नहुने र पृथ्वीको ध्रुवहरूबाट गुज्रने हुनाले ती भू-उपग्रहहरूले पृथ्वीको सम्पूर्ण सतहको निरीक्षण गर्न सक्ने छन् .

COSPAS-SARSAT का सहभागीसबै देशका पानी र हवाई जहाजहरूमा एउटा विशेष प्रकारको दुर्घटना उपकरण हुनेछ जसले दुर्घटना हुने बित्तिकै प्रत्येक ५० सेकेण्डमा संकेत प्रसारित गर्न थाल्नेछ. भू-उपग्रहहरूले संकेत टिप्नेछन् र उद्धारक दल समक्ष पुऱ्याइ दिनेछन् (प्रसारित गर्नेछन्) .

भू-उपग्रहहरूले पठाएको संकेत ग्रहण गर्न (टिप्न) र उद्धार दल कहां पुऱ्याउन रूसको अरखन्गेल्स र ब्लाडिभोस्तोकमा भू-केन्द्र र मास्कोमा उद्धार व्यवस्थाको केन्द्रको निर्माण हुंदैछ .

—:०:—

## अमेरिकामा आत्म-हत्या र बेरोजगारी

संयुक्त राज्य अमेरिकामा १ प्रतिशत बेरोजगारी बढदा ३१८ जनाले आत्महत्या गर्छन् .

बिलियम्स कलेज म्यासाचुसेटका प्रोफेसर मार्टीन ओ. सापिरोको अध्ययन अनुसार बेरोजगारीको दर ६ बाट १० प्रतिशत पुग्दा आत्महत्याको घटनामा १,२७२ बढ्यो अर्थात् १ प्रतिशतमा ३१८ जना बढ्यो . सं.रा. अमेरिकामा प्रतिदिन ७५ जनाले आत्महत्या गर्छन् . ☆

## पूर्णेको दिन मन चंचल हुन्छ

राम्रीको उदाहरण दिनु पऱ्यो भने "जुन जस्ती" भन्ने पुरानो चलन छ . चन्द्रमाले मान्छेको मनलाई धेरै पहिले देखि तान्दै आएको छ . चन्द्रमामा मान्छे पुगेर त्यसको वास्तविकता थाहा पाए पछि पनि त्यस प्रतिको आकर्षण घटेको छैन .

चन्द्रमाको घटबढले मान्छेको मनमा किन प्रभाव पार्छ भन्ने बारे हाले केही खोज भएका छन् . चन्द्रमाको आकर्षणले पूर्णेको दिन समुद्रमा ज्वार उठ्ने कुरा त सबैं बिदितै छ त्यस्तै मान्छेको शरीरमा पनि ६० प्रतिशत पानी हुने हुंदा पूर्णेको दिन चन्द्रमाले हाम्रो शरीरको पानीलाई प्रभावित पार्छ र फलस्वरूप मस्तिष्क उत्तेजित हुन्छ . यदि मान्छेले आफ्नो 'मूड' वा मनस्थितिको ग्राफ चार्ट बनाउने हो भने त्यसको उतार चढाव चन्द्रमाको घटबढ संगै मेल खाने छ .

चन्द्रमालाई 'मन' बाट उत्पन्न भएको "मनोज" र "अमृतको कलश" भन्ने प्राचिन ग्रथमा उल्लेख छ तर भरतका एकजना डाक्टरको खोज अनुसार पूर्णेको दिन चन्द्रमाले मान्छेलाई बिष खान र आत्महत्या गर्न प्रेरित गर्छ . बिष खाएर अस्पतालमा भर्ना गरिएको रोगीको संख्याको तीन वर्ष सम्म हिसाब गरे पछि उनी के निश्कर्षमा पुगे भने पूर्णेको दिन अरू दिन भन्दा बढी मानिस हरूले बिष खाएर आत्महत्या गर्ने प्रयास गर्छन् बहुला वा सनकीहरूमा चन्द्रमाको कला बढ्नुको साथ साथै सनक चढ्ने क्रम बढ्दै जाने घटना त प्रायः सबैले महसूस गरेकै कुरा हो .

चन्द्रमाले मान्छेको मस्तिष्कको कुन भागलाई उत्तेजित गर्छ अथवा हार्मोनहरूलाई उत्तेजित गर्छ कि भन्ने बारे अनुसन्धान बाकी नै छ . अब उक्त डाक्टरले यातायात दुर्घटना संग चन्द्रमाको संबंध बारे अध्ययन गर्ने बिचार गर्दैछन् . ★

## यौन व्यापार माथि कर

स्विडेनको उच्च न्यायालयले दिएको फैसला अनुसार वेश्या वृत्ति एक प्रकारको व्यक्तिगत कारोबार (व्यवसाय) हो र यसमाथि कर लगाउन सकिन्छ .

"के त्यसो भए हामीले हामीसंग सुत्ने जतिलाई बील, भर्पाई दिनु पर्ने भयो त ?" एउटी असन्तुष्ट महिला (वेश्या) ले झोकिदै भन्छे .

स्विडेनमा वेश्यावृत्तिलाई अपराध मानिदैन . तर विश्वको सबंभन्दा पुरानो यो व्यवसाय माथि कर कार्यालयको हस्तक्षेप भएको छैन अब आएर त्यहांको सर्वोच्च कर अदालतले यो निष्कर्ष निकालेको छ कि यौन सेवाको व्यापारिक आदान प्रदान एउटा आर्थिक कारोबार हो र यसले यसमाथि कर लगाउन सकिन्छ .

—:०:—





## महाकवि लक्ष्मी प्रसाद देवकोटाको अमुद्रित कविता

[ यो कविता पाल्पा तानसेनको धवल पुस्तकालयबाट २००९ चैत्रमा प्रकाशित तथा श्री कुलमणि देवकोटाद्वारा संपादित हस्त लिखित पत्रिका 'प्रगति' पाइला– १, प्रकाश– १, मा प्रकाशित भएको थियो . जो यहां साभार उद्धृत गरिएको छ . ]

# साथी

१

मेरो दिलमा गहिरो घाउ छ !
न कुनै मेरा डाक्टर छन्– न मेरो कुनै भाउ छ !

२

रगतबाट रसाएर चुहिएर आएको मेरो तातो
पसीनाको
नूनीलो धाराद्वारा यी चाहुरिएका बूढा पहाडका
मुहारमा
परे झैं मेरा मुखमा नीला, गहिरा, खोंच खाडी
परेको कसैले देखेन–
एक कविले पनि यसको चित्र लेखेन,
सब देख्छन् सुनौला बादल, अमृत जून,
म सुकेको खस्रो जीब्रोले भोको बडवानलको आंच
मा चाखि रहेछु, थोपा थोपा, आफ्नै रगतका नून
हाड मकाएको वेदना, आन्द्रा चुडिएको पीडा,
मेरो छ,
मेरो छ भारी सबको पूँजी,
मेरो परिश्रम अरूको मह–
मेरा बच्चा पहेंला अरूका राता, पीरा–
अरूका गाला स्याउ छ- मेरो मुख एउटा घाउ छ,
घमंडी भूँडेहरूले नाक फर्काएर चक्कूको धार जस्तो
अपमानले चरक्क चिरेको कलेजाको मेरो खाडल
पुरिने छैन- कहिल्यै पुरिने छैन–
बज्रले चिरिएको चट्टान रातो धर्सो परेको एक पाउ छ
नानी ! एक पाउ छ !
तिमी जे सुकै फलाक ए ढोंगी नेता म सुन्दिन .
मेरो मुख एक हाउ छ
मेरो कलेजामा गहिरो गहिरो रातो घाउ छ

३

मेरा आंखा छैनन् छैनन् म अँध्यारामा छु घन-
अधन्कारमा नानी
मेरा कान छैनन् , मेरो नाक, मेरो छाला त्यो
मस्यामको O
कुंभकर्ण हड्डीलाई दुनियांले पयरले पिसेर चकना-
चूर बनाएको
खड्जडे घूलो झैं खस्रो मस्रो छ, मेरा आंसु हजार
तिनाउ ★ छन्, हज्जार भंगाला, हज्जार धार
जब सकस कारखानाले सलबलाउँदा रेसम ओकल्छन्
र डकार्छन्- के म तिनको रीस नगरूँ–
जब कविले तारीफको पुल बाँधेको त्यो कडा
पूँजीपतिको चांदी थुपारेको जस्तो क्रूर हिमालले
म र मेरा थाग्ने, चिथरे
सिगाने, लूलखुट्टी, पहेंलपाते, जुम्रे, हीं हीं बच्चा
र मलाई
भोटे सियोका कडोरन संख्याले रोप्छ, सुइरन्छ,
झिरल्छ र पिरल्छ ?
के म नसरापूँ ती कलियुगी धरापहरूलाई जसलाई
ठूलाका रंगी चंगी महल र दरबार भन्दछन् जब–

O पाल्पाको एउटा डाँडाको नाम उहिले दक्षिणबाट तानसेन पस्दा यो डांडा चढनु पर्थ्यो .

★ पाल्पाको एउटा खोला .

बांखुरे तारा मण्डल स्याउले मेरो झुप्रालाई
उत्तरी बतासको भीमसेनले फू गरेर
खेलेर भताभुङ्ग ढालिदिन्छ ?
मेरो मुटुमा घाउ नलागोस् त्यस बेला
जब मेरा भोका तडपंदा बच्चाहरूले
त्यो सेतो, सलक्क परेको, गोल गोल मधुको पोको
जस्तो रसगुल्ला धनीको स्वाठे चिम्लो,
बेपरिश्रमी ओडारले निष्प्रयत्न सलक्क
निलेर मुख मिठ्याएको देखेर
अभागी खप्परका दुबै खाडल भरभर
लाचारीका जल लिन्छन् ?
लाखां पहाड चिरिए पहिरो गए-तितीहरू खडै छन्
अझ कृष्ण गंडकीको जल तूफान उपर पनि
सानो सानो नाउ छ—
तर म ढल्न लागें, म बल्न लागें, म
जल्न लागें—
मेरो आँसुमा डुंगा छैन, यसलाई तर्ने के नाउ छ ?
आह ! मेरो जीवनलाई खाने को राहु छ ?
म त्यसैलाई मार्न हिंडिरहेछु- त्यसैलाई मार्ने मेरो
दाउ छ
फर्कन्न साथी ! फर्कन्न ! - तिमी जति भन
म अब फर्कन्न—
यहां छातीको भांचिएको करंग भित्र एक
सर्वकालिन रातो
ताजा घाउ छ, साथी ! घाउ छ,
यसको मलम त्यही राहुको रगत
त्यसैको बोसाको पट्टी, साथी,
त्यही मलम खोज्न गएं, गएं, गएं,
अब म फर्किन्न —
तिमीलाई चाख छैन यस कुरामा
किनकि तिम्रो गालामा स्याउ छ !
साथी !
तर यो कलिलो मासुको मुटु र
कलेजामा मेरो चाहिनी
बज्रले ताछेको चट्टान एक पाउ छ
साथी !

—:o:—

# मर्मको आँसु

-पाब्लो नेरूदा

कयौं वर्ष पहिले मलाई सांतियागो (चिली) को एक मजदूर युनियनका सदस्यहरूको निम्ता प्राप्त भयो .

घरबाट हिंड्ने बेलामा मैले अनायास जुन किताप हातमा आयो, त्यही लिएर हिंडेथें .

पुस्तक थियो :– " एस्पान्या एन एल कोरोजो " – चिन्तन तथा कविताको कठिन पुस्तक .

मुटुको धुकधुकीको साथ मैले पुस्तक पढेर सुनाउन थालें . कुनै आवाज छैन, ताली आउन्न, मलाई कुनै संकेत प्राप्त हुन्न .

अन्ततः मैले पढ्ने काम समाप्त गरें . पुस्तक बन्द गरें र अगाडि हेरें . पत्थर बनेका अनुहार निश्चल थिए . कोठाको पछिल्लो छेउबाट एउटा मानिस उठ्यो . उसले भन्यो– " कवि मित्र...म के कुरा भन्न चाहन्छु भने आजसम्म कसैले हामीलाई यी कुरा भनेका थिएनन्, हामीलाई यो थाहा थिएन . हामी सबै यी भावनाबाट अनभिज्ञ थियौं . " यसभन्दा बढी उसले केही भन्न सकेन . उसको हिक्का छुट्यो . मैले चारैतिर आँखा घुमाएं . मेरा दीनहीन अनपढ श्रोता अझै पनि निश्चल थिए, तर सबैका सबै रोइरहेका थिए . —:o:—

# एकान्त

बा– ए छोरा, भोलिको मिटिङमा के गर्न आंटिस् ?

छोरा- खै, के गरम् के गरम् धेरै साथीहरूले प्रस्ताव पास गर्नु पर्छ भन्छन् .

बा– तैंले के भन्छस त ?

छोरा- केही साथीले बिरोध गर्नु पर्छ भन्छन् . उनीहरूले नै चुनाउ जिताए . भनेको नमानी पनि भएन .

बा– कस्तो लाटो कुरा गर्छस्‌ए, तं त चुनाउ जिताए त के भो त ? उनीहरूले नाक फुलाउने मौका पाइहाले अब तेरो कुर्सी पल्टाउन सक्ने छैनन् . पांच वर्ष भित्र जे गर्न सक्छस् गर . बाबुको छोरा भए कमाएर देखा . यस्तो मौका फेरि आउन्न बुझिस् .

छोरा- हस् बा . ★





# रूनेलाई रून दिनुस् फाइदा गर्छ

मानिस दुःखमा रून्छन्, खुशीले पनि रून्छन् . आंसु झाछंन् . आंखा दुख्दा र प्याज काट्दा पनि आंसु आउँछ तर विभिन्न कारणले आएको आंसुको रासायनिक बनावट भिन्न हुन्छ . जस्तै आंखा दुखेर आएको आंसुमा भन्दा कुनै मानसिक दुःख कष्टबाट निस्केको आंसुमा प्रोटिनको मात्रा धेरै हुन्छ .

कहिले काहिं खसी बोकालाई काटने बेलामा त्यसको आंखामा आंसु देखेर टीठ लागेर नकाटेको र त्यसलाई जीवनदान दिएको घटना बेला बेलामा सुनिन्छ . तर आंसुको बारेमा अनुसन्धान गर्ने अमेरिकी डाक्टरहरूले के पत्ता लगाएका छन् भने मान्छे बाहेक अरु प्राणि रूँदैनन् . सबै स्तनधारी जीवहरूको आंखाबाट आंसु आउँछ तर त्यो आंसु दुख पीडा वा खुशीको आंसु हैन . आंसुले आंखालाई भिजाएर नरम राख्छ र आराम दिन्छ .

मानिस मात्रै यस्तो प्राणी हो जो भावनात्मक कष्ट, दुख पीडा, तनाव हुँदा आंसु बगाउँछ . कहिले सम्म उमेर पुगेका मान्छे कुन कुन परिस्थिति ा कुन समयमा र कुनमात्रामा रून्छ भन्नेकुरा थाहा लागेको छैन तर वैज्ञानिकहरू यो निष्कर्षमा पुगेका छन् कि रूनु मान्छेको स्वास्थ्यको लागि बेस हो किनभने रूदा आँसु निस्कन्छ र त्यो आंसुले मान्छेको शरीरमा तनावबाट उत्पन्न हुने रसायनहरूलाई बगाउँछ र मान्छेलाई विषालु रसायनबाट छुटकारा दिलाउँछ . यदि त्यो रसायनबाट छुटकारा नपाउने हो भने अनेक रोग लाग्न सक्थ्यो . यसरी आंसुले तनाव कम गर्छ .

डाक्टरहरूले तनावद्वारा पीडित एकसयजना स्त्री र पुरूष रोगीहरूको अध्ययन गरेका थिए ती रोगीहरू मध्ये ५० जना अल्सर ५० जना कोलाइटिस ( ठूलो आन्द्रा सुन्निने रोग ) का बिरामी थिए . उनीहरूलाई ५० जना निरोगी मानिसहरूसंग दांजियो- ती ५० जनाको जीवन परिस्थिति ती रोगीहरूको संग मिल्दो थियो . परिणाम के निस्क्यो भने ती निरोगी व्यक्तिहरू रून्थे आंसु बगाउँथे जबकि ती १०० जना रोगीहरू रुने कामलाई कमजोरी र संयमकोकमी मान्थे अर्थात रूनु खराब हो भन्ने सम्झथे . यसबाट के निस्कर्ष निस्क्यो भने रूदा तनाव कम हुने हुनाले रूने मान्छेलाई तनावबाट पैदा हुने रोगले छुन सक्दैन .

दिशा ,पिसाब पसिना, सास शरीरबाट निस्कने प्रक्रिया जस्तै आंसु निकाल्ने प्रक्रिया पनि आवश्यक छ . यसबाट शरीर बिषालु पदार्थबाट मुक्त हुन्छ .

भबिष्यमा यदि तनावले गर्दा निस्कने रासायनिक पदार्थको नाप तौल गर्न सकियो भने दुःख र खुशीको कारणले शरीरमा हुने जैबरासायनिक परिबर्तनलाई नाप्न सकिने छ .

डाक्टरहरूको भनाइ अनुसार मानिसको व्यक्तित्वका विशेषताहरू र उस्को रूने बानी बीच कुनै संबन्ध हुदैन किनकि रूनेकारण तत्कालिन मानसिक स्थितिबाट हुन्छ . धेरै जसो मानिसहरू साझ ७ वजे र १० वजेको वीचमा रून्छन् किनकि त्यसबेला उनीहरू आफ्ना नजीकका व्यक्ति संगी साथीहरूसंग हुन्छन् .

रूने घटना आधा जति उदासीको कारणले हुन्छ भने ५ जनामा १ जना खुशीले रून्छन् . त्यस्तै गरी १० जनामा १ जना क्रोधले, १५ जनामा १ जना सहानुभूतिपूर्वक, २० जनामा १ जना पीरले र ३० जनामो १ जना डरले रून्छ-

न् . रूनेहरू मध्ये सैकडा ८५ स्त्री र सैकडा ७३ पुरूषहरूले रोए पछि स्वस्थ, हल्का महसूस् गर्छन् .

रूनु शारीरिक र मानसिक दृष्टिले लाभकारी हुने कुरा स्पष्ट छ . आंसुले मनलाई हल्का गर्छ . खास गरी पुरूषहरूलाई त रूनै नहुने वर्ग मानिन्छ . पुरूषहरूको रूवाइ आंखामा आंसु भरिने सम्म सीमित हुन्छ जबकि महिलाहरू आंसु बगाएर रून्छन् . पुरूषको दांजोमा महिलाहरू ५ गुना बढी रून्छन् . डाक्टरहरूको निष्कर्ष यो छ कि आंसु रोक्नेकाम हानी कारक हुन्छ . यसैले कोही रून्छ भने उसलाई निर्धक्क भएर धित नमरून्जेल रून दिनुस् .

तर कुनै बालक वा ठूलै मानिस पनि भोकाएर रोएको छ वा कुनै विपतमा परेर रोएको छ भने त्यसैलाई धित नमरून्जेल रोऔंन् भनेर नछाड्नुस्, मानवीय कर्तव्यलाई नबिर्सनु होला .

–:०:–

## प्रश्नोत्तर

आगामी अंक देखि प्रश्नोत्तर कार्यक्रम पनि समावेश गरिदै छ रमाइला र ज्ञानविज्ञानका प्रश्नहरू पठाउनोस् र आपनो चातुर्य देखाउनुस् हरेक अंकको सर्वोत्तम प्रश्नकर्तालाई एउटा पुस्तक पुरस्कार पठाइन्छ . प्रश्न पठाउदा आफ्नो नाम ठेगाना पूरा पठाउनु होला . — संपादक

## मलाई खुत्रुक्कै पार्‍यो जेठान तिम्रो बैनीले

नेपाली संगीतका महान सेवक मित्रसेन जसले नेपाली गीतलाई संगीत बद्ध गरेर गाउदै देश र प्रवासमा नेपालीगीत प्रति रूची जगाए साथै गीतलाई रेकार्डमा भर्नेकाम पनि गरे त्यस्ता अमर गायकको एउटा रमाइलो गीत पाठकहरूको मनोरंजनको लागि यहां प्रस्तुत गरिदै छ .

मलाई खुत्रुक्कै पार्‍यो जेठान
तिम्रो बैनीले[2]
धरती मुनि भिडालु त
धरती माथि गाबा
तिमीसित प्रीति लाउनु
कानै पक्रें बाबा
मलाई खुत्रुक्कै ... ... ...
एउटो घर त नेपालैमा
अर्को घर त सिम्ले
एउटो छोरा पाउला भन्थें
पोइले आंखा चिम्ले
मलाई खुत्रुक्कै ... ... ...
लाहुरे दाइले खसी काट्यो
बोसो माथि बोसो
बोसो खान पाइन भनी
यति लामो चोसो
मलाई खुत्रुक्कै .. ...
मदेशेले हलो जोत्यो
डल्ला कर्काई कर्काई
मलाई मोहनी लायौ नानी
जुल्फी लर्काई लर्काई
मलाई ... ...

## पृथ्वी घुम्ने गति घटदै छ

३६ करोड वर्ष अघि पृथ्वीमा ४८० दिनको १ वर्ष हुन्थ्यो .

पृथ्वीको आपनोअक्ष (धुरी) मा घुम्ने गति घटदै छ भन्ने कुराको प्रमाण हाले भेट्टिएको छ . पृथ्वीबाट हराइसकेका जीवहरूको अध्ययन गर्ने वैज्ञानिकहरू ( Palaeontologists ) ले समुद्री जीव मुगा ( coral ) को ६३ करोड वर्ष अघिको जीवाश्म अध्ययन गर्दा यो कुरा पत्ता लागेको हो . रूसको विज्ञान प्रतिष्ठानको साइबेरिया विभागका प्राचीन जीव वैज्ञानिकहरूले शक्तिशाली इलेक्ट्रोनिक माइक्रोस्कोप द्वारा मुगाको जिवाश्म अध्ययन गर्दा त्यसमा दैनिक बृद्धिको रेखा भेट्टाए त्यस्तो रेखा रूखको फेंद काट्दा चक्का चक्का रूपमा जस्तै देखिन्छ .

ती वैज्ञानिकहरूले ताजा मुगाको वार्षिक चक्रमा ३६५ वटा रेखाहरू भेट्टाए तर करीब ३६ करोड वर्ष पुराना मुगाको वार्षिक चक्रमा ४७० देखि ४८० दैनिक रेखाहरू भेट्टाए यसबाट के प्रमाणित हुन्छ भने ३६ करोड वर्ष अघि पृथ्वीमा ४७० देखि ४८० दिनको १ वर्ष हुन्थ्यो जबकि अहिले ३६५ दिनको १ वर्ष हुन्छ .

## दिर्घायुको रहस्य

धेरै सागपात खानु, पहाडी इलाकामा बस्नु, खुब हिड्नु र कहिल्यै नरिसाउनु लामो आयुको रहस्य हो . चीनको याङ्से नदी तटको हुबेइ प्रान्तमा बस्ने ८६ जना शतवर्षजीवीहरूको अनुसन्धान गर्दा यो कुरा पत्ता लागेको भनी प्रान्तीय जनगणना अधिकारीको भनाइ छ .





# पढने स्वतन्त्रता

[ भारतको विगत राष्ट्रपति चुनावमा पराजित उम्मेदवार न्यायाधीश श्री हंसराज खन्नाको विचार ]

जान स्टुआर्ट मिलको भनाइ के छ भने कसैले विरोधीहरूको कुरा या तर्क पनि आपना शिक्षक वा विरोधीहरूबाटै सुन्नु पर्याप्त हुंदैन . उनीहरूले ती तर्क वा कुरालाई आपनै तरिकाले पेश गर्छन् र आफ्नो तर्फबाट त्यसको खण्डन पनि सुनाइ दिन्छन् . श्रोताहरूलाई यो कुराको सुविधा हुनु पर्छ कि उनीहरूले ती कुरा वा तर्कहरू ती व्यक्तिबाटै सुन्न पाउन जसले ती कुरा वा तर्कहरू माथि विश्वास राख्छन् र ती तर्क वा कुरालाई प्रभावकारी ढंगले प्रस्तुत गर्छन् .

मत नयाँ विचार देखि डराउने बानी एउटा ठूलो अदूरदर्शिता हो . कुनै मत या विचार लोकप्रिय भयो भन्दैमा त्यो प्रामाणिक नै हुन्छ भन्ने कुराको केही ग्यारेण्टी छैन . सर्वप्रिय विचार त प्रायः लोकमै चल्छन् जब कि अप्रिय मत वा विचारले उल्काले झैं नयाँ बाटो बनाउने प्रक्रियामा प्रकाश छोड्छन् र लामो प्रकाश रेखा जस्तो खिच्छन् . इतिहास साक्षी छ कि मान्छेको उन्नति एउटा खास सीमा सम्म त्यस्ता अप्रिय विचारहरूद्वारा नै भएको छ जो आपनो जन्म कालमा उपसिद्धान्त वा अनधिकृत मत जस्ता देखिन्थे . विचारहरूबाट डराउनु, एक प्रकारले, आपनै उन्नति बन्द गर्नु हो, पुरानो विचारमा बाँधिएर बस्नु हो, बौद्धिक दृष्टिले आफूलाई बन्दी बनाउनु हो .

कुनै पुस्तक या पत्रिकालाई जफत गर्ने शक्तिको उपयोग ठूलो राष्ट्रिय आपातकालको स्थितिमा बाहेक अरू बेला बडो सावधानी पूर्वक गर्नु पर्छ प्रायः कुनै किताब जफत हुंदा त्यसलाई पढने इच्छा बढाइ दिन्छ . लुकेर गरिएको चुम्बन झैं निषिद्ध साहित्यको पनि आपनै एक प्रकारको जादु हुन्छ र हामीले यो कुरा पनि सम्झनु पर्छ कि किताबहरू सँधैंको लागि जफत (ब्याण्ड) लाग्न सक्तैन र विचारलाई बन्द गर्न सकिदैन . ★

## साम्यवाद कसको लागि ?

### सोभियत संघका महाकवि येब्गेनी येब्तुसेंकोको विचार

आफू भन्दा तगडा मान्छेलाई देखेर डराउनु पर्दैन, त्यसलाई पछार्ने ढंग थाहा हुनु पर्छ .

मलाई मानिसहरू हिम्मती भन्छन् . म त्यस्तो छैन . मैले केवल लेख्ने काम गरेको छु, कसैको खण्डन गरेको छैन, कहिल्यै . यो कस्तो विडंबना हो कि सहज सच्चाइलाई प्रकट गर्नु पनि उनीहरूलाई साहस जस्तो लाग्छ .

म, आपनै देशमा, प्रायः उदास हुन्छु . जो मानिस उदासीलाई खतरनाक ठान्छन् उनीहरू साह्रै खतरनाक हुन्छन् .

हाम्रो देशमा मेहनतलाई यति धेरै महत्व दिइँदै छ कि त्यो मेहनत गर्ने मान्छे भन्दा धेरै महत्वपूर्ण भएको छ . उपन्यासको नायकले फलाम पगाल्छ, अन्न फलाउँछ, मेसिन चलाउँछ – तर तिनले कहिल्यै केही सोच्दैनन्, प्रेम गर्दैनन् . यदि सोच्ने या प्रेम गर्ने भए पनि कठपुतलीहरूले झैं गर्छन् . यो प्रश्न उठाइनु पर्छ कि साम्यवाद मानिसको लागि हो कि मानिस साम्यवादको लागि . ●

## चौतारी

( संपादकलाई चिट्ठी )

यस स्तम्भमा विभिन्न बिषयमा तपाईको बिचार तथा स्थानीय समस्या र सुझावहरू साथै यस पत्रिकामा प्रकाशित कुराहरूबारे पाठकहरूको प्रतिक्रियाको रूपमा प्राप्त चिट्ठी छपाइन्छ . यसमा पत्र पठाई सक्रिय पाठक बन्नुहोस् हामीलाई सक्रिय पाठकहरूको खांचो छ . — संपादक

# हितैषी ? मुसा, बिरालो र सर्पको कथा

-विनय कुमार कसजू

मुसा सखाप पार्न बिरालो पालिन्छ,तर बिरालोले मुसा संग मिलेर मिठामिठा कुरा बांडीचुँडी खान थाल्यो भने के गर्ने ?

त्यो घरमा त्यस्तै भयो ।

मुसाले अचाक्ली ग-यो भनेर बिरालो पाल्यो, तर बिरालोले माछा मासु दूध घ्यू सखाप पार्न थाल्यो । किन बिरालोले मुसा खान छाडेर अरू खाने कुरामा मन दियो त भनी बुझ्दा के फेला प-यो भने बिरालो र मुसाको सम्झौता भएको रहेछ ।

शिकार र शिकारीको बीच पनि सम्झौता हुन्छ ?

स्वार्थ मिले पछि सम्झौता हुदो रहेछ ।

घरमा मिठा मिठा कुराहरू बिरालोले नभेट्टाउने गरी जालीदार दराज भित्र र दलिनको सिखरमा झुण्डाएर राखिन्थ्यो बिचरा बिरालो टुलु टुलु हेरी बस्थ्यो एकदिन एउटो मुसो जाली भित्र पसेर सुकेका माछा खान लागेको बिरालोले देख्यो । उसले मुसालाई भन्यो — मलाई अलिकता माछा दियौ भने मैले तिमीलाई केही गर्दिन ।

पहिले त मुसो डरायो तर आफू जाली भित्र सुरक्षित हुनाले उसले बिरालोलाई बाचा बांध्न लगायो, जस अनुसार अब उप्रान्त बिरालोले मुसाहरूलाई दुःख नदिने, बदलामा मुसाहरूले बिरालो लाई घरको कुना काप्चामा र जाली भित्र राखेका मिठा मिठा खाने कुरा खान मद्दत गर्ने ।

सम्झौता अनुसार अब मुसाहरूले घरमा लुकाएको माछा मासु दूध घ्यु बिरालोलाई दिन थाले । कहिलेकाही उनीहरू दलिनको सिखरमा चढेर दूध घ्यु पनि पोखाई दिन्थे यसरी मुसाहरू स्वन्त्रता पूर्वक घरमा घुम्न र उधुम मच्चाउन पाइरहेका थिए, जसले गर्दा उनीहरूको सन्तान पनि खुबै बढ्यो । विचरा घर मालिक टाउको समातेर बसेको थियो । एकदिन अचानक त्यो घरमा एउटा ठूलो कालो सर्प पस्यो । सर्पले भकाभक मोटा-मोटा मुसाहरू रोज्दै खान थाल्यो । घरधनी सर्प देख्दा डरायो । घरमा बालबच्चा पनि थिए । सर्पले टोक्न सक्थ्यो । सर्प बसेको घरमा नबस्नु भन्छन् । सर्प धपाउनु वा समाप्त लगाउनु उसको कर्तव्य थियो । तर सर्पले मुसा सखाप पार्न लागेको देखेर ऊ अत्यन्तै खुशी भयो । मुसाहरूले उसलाई यति सताइ राखेका थिए कि उसलाई त्यो सर्प आफ्नो हितैषी मित्र नै हो कि जस्तो लाग्न थाल्यो ।

## मत्स्यकन्या

-वाइ. बी. इट्स्

एउटी मत्स्यकन्याले
एउटा युवकलाई देखिन्
पौडी खेलिरहेथ्यो,
उसमाथि मुग्ध भइन्
उसलाई अंगालोमा कसिन्
अनि खुशीहुंदै डबुल्की मारिन्
अनि तब आफ्नो खेलको क्रूरता
थाहा पाइन्
जब तलबाट युवकको लास माथि
आयो—
प्रेमी पनि गहिराइमा निसासिन्छ !

(श्री हरिवंश रायद्वारा अंग्रेजीबाट हिन्दीमा अनुवाद गरिएको कविताको नेपाली अनुवाद)



# श्रद्धाञ्जली



नेपाल किसान संगठन जिल्ला कार्य समिति पाल्पाका सभापति श्री हुम बहादुर श्रेष्ठको २०३९ चैत्र १० गते पाल्पा आर्य भंज्याङमा दुखद निधन भयो । समाज सेवी तथा राजनीतिक कार्यकर्ता श्री श्रेष्ठको जन्म पाल्पा ताहूँमा स्व. पिता श्री खड्ग बहादुर श्रेष्ठ र माता स्व. श्रीमती तिल कुमारीबाट १९८७ मा भएको थियो । वहां रंभा माध्यमिक विद्यालयका संस्थापक र अध्यक्ष रही विद्यालयको उन्नतिमा सहयोग गर्नु भयो. २००७ साल पछि वहांले किसानको हक, बांधा प्रथा उन्मूलन, मोहियानीहकको सुरक्षा जिन्सी तिरोको विरोध जाली फटाहाको र अत्याचारको विरोध सक्रियता पूर्वक गर्नु भयो र यसै क्रममा २०१८ सालमा शांति सुरक्षामा कारवासमा पनि बस्नु भयो । २०१९ साल देखि वहां निरन्तर पञ्चायतको तल्लो तह देखि पाल्पा जिल्ला पञ्चायतको उप सभापति पदमा रहेर सेवा गर्नु भयो । वहाँलाई गुमाएर पाल्पाले एक जना महत्वपूर्ण व्यक्तिलाई गुमाएको छ । वहांको दिवंगत आत्मालाई चिर शांति कामना गर्दै वहां प्रति श्रद्धांजली व्यक्त गर्दछौं । साथै शोक संतप्त परिवार प्रति हार्दिक समवेदना प्रकट गर्छौं ।

२०३९ चैत्र २२ गते ताहुंमा आयोजित वहांको शोक सभामा सामेल हुनु हुने सम्पूर्ण महानुभाव प्रति कृतज्ञता व्यक्त गर्छौं ।

**शोक सभा समिति**

ताहुँ, पाल्पा

(पृष्ठ ८ को बाकी)

सभापतिको आसनबाट बोल्दै श्री मेघराज शर्माले शिक्षक संगठन आज-को दिनमा वैधानिक भएको हो यसमा प्रश्न चिन्ह खडा गर्नु हुँदैन भन्नु भयो । पाल्पामा शिक्षक दिवस मना-इएको यो पहिलो पटक हो ।

## शिक्षक संगठनका अध्यक्षद्वारा राजिनामा

पाल्पा तानसेन, नेपाल राष्ट्रिय शिक्षक संगठन जिल्ला समिति पाल्पाका अध्यक्ष श्री जगत बहादुर जोशीले आफ्नो व्यक्तिगत कारणले अध्यक्षको पदबाट राजिनामा दिनु भएको छ र हालको लागि उपाध्यक्ष श्री मेघराज शर्माले कार्यवाहक अध्यक्ष भै काम गर्ने भनी गत चैत्र २६ गते बसेको शिक्षक संगठन-को बैठकले निर्णय गरेको कुरा थाहा भएको छ ।

## वीरेन्द्र शील्ड तथा प्रज्ञाप्रवीण शील्ड प्रतियोगिता

तानसेन चैत्र ३० गते । जि. का. शिक्षा शाखा सहकार्यकलाप तथा खेल-कूद समितिको आयोजनामा चैत्र २५ गते देखि शुरुभएको पांचौं प्रज्ञाप्रवीण शील्ड र चैत्र २७ गते देखि शुरु भएको नवौं वीरेन्द्र शील्ड प्रतियोगि-तामा श्री राम तुलसी व्या. मा. वि. रामपुरले यस वर्षको वीरेन्द्र शील्ड प्राप्त गर्‍यो । तानसेन नगर बाहिर यो शील्ड गएको पहिलो घटना हो । प्रज्ञाप्रवीण शील्ड भैरव जनता मा. वि. भैरव स्थान र जनता व्या. मा. वि. तानसेनले संयुक्त रुपमा विजय गर्‍यो । पुरस्कार वितरण समारोह जि. शि अ. श्री इन्द्र बहादुर शाहीको अध्यक्षतामा टुंडीखेल मंचमा भएको थियो ।



प्रकाशक र सम्पादक:- विनय कुमार कसजू । मुद्रक: कुमार प्रेस, तानसेन, पाल्पा फोन-- १८७